# नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगलको विधान २०१० (संशोधन-२०१६)

**प्रस्तावना:**

बहुपहिचानमुलक नेपाली समाजको पृष्ठभुमिमा आदिवासी जनजातिको परिभाषा भित्र सुचिकृत भएर आफ्नै मौलिक पहिचान, भाषा, भेषभुषा, संस्कृति, धर्म, लिपि, कला साहित्य र समूदायको विकासका लागि प्रवास पोर्तुगलमा संगठित भई क्रियाशील रहेका र रहने विभिन्न आदिवासी जनजाति समूदायका संस्थाहरुलाई महासंघीय प्रणाली अनुरुप समन्वय गर्दै साझा सवालमा नीति निर्माण गर्न, नेतृत्व विकास र जातीय सदभाव एवं भातृत्व अभिवृद्धि गर्न, नेपालका आदिवासी जनजातिहरुको हक अधिकार स्थापित गराउने सवालमा समेत सहयोगात्मक भुमिका निर्वाह गर्न गराउन संयुक्त रुपले संगठित रहन वान्छानीय भएकोले नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगल स्थापना गरी नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगलको विधान २०१० (संशोधन २०१६) निर्माण गरी लागु गरिएको छ ।

## परिच्छेद - १

**१. नाम तथा प्रारम्भः**

क. यस संस्थाको नाम नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगल रहनेछ । अंग्रजीमा **Nepal Federation of Indigenous Nationalities Portugal** र छोटकारीमा ने.आ.ज.मा. पोर्तुगल (NEFIN Portugal) हुनेछ ।

ख. संस्थाको कार्यलय रहने ठेगाना:- संस्थाको कार्यलय पोर्तुगलको राजधानी लिस्बोनमा रहनेछ ।

ग. संस्थाको कार्यक्षेत्र :- यस संस्थाको कार्यक्षेत्र पोर्तुगल भरी हुनेछ, आवश्यकता अनुसार पोर्तुगलका विभिन्न प्रान्तहरूमा शाखा विस्तार गर्न सकिने छ ।

घ. प्रारम्भ :- यो विधान महासंघको महाधिवेशनले पारित गरेको मितिदेखि लागु हनेुछ ।

ङ. संस्थाको अस्तित्व :- यो संस्था एक अविछिन्न उत्तरधिकारवाला, संगठित स्वाशासित, गैर नाफामुलक, गैरराजनैतिक तथा गैरसरकारी सामाजिक संस्था हुनेछ ।

**२) परिभाषा:**

विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस विधानमा:

क) “विधान” भन्नाले नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगलको विधानलाई सम्झनु पर्नेछ ।

ख) “महासंघ” भन्नाले नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगललाई जनाउँदछ ।

ग) “आदिवासी जनजाति” भन्नाले हिन्दु वर्णाश्रमको संरचनाभित्र नपर्ने नेपालका आदिवासी एवं मुल जातिहरुलाई जनाउदछ ।

घ) “संघीय परिषद” भन्नाले महासंघको संरचनामा व्यवस्था गरिएको कार्यसमिति भन्दा माथिको निकायलाई सम्झनुपर्नेछ ।

ङ) “कार्यसमिति” भन्नाले महासंघको संघीय परिषद सचिवालय संचालनका लागि गठित निकाय सम्झनुपर्दछ ।

च) “नियम विनियम” भन्नाले यस विधानको अधिनमा रही बन्ने नियम विनियमलाई जनाउदछ ।

छ) “मातृसंस्था” भन्नाले महासंघको कार्यसमिति वा महासंघीय परिषदमा प्रतिनिधित्व गर्ने पदाधिकारीहरुको आफ्नो जातीय संस्थालाई जनाउदछ ।

ज) “समिति वा उपसमिति” भन्नाले महासंघको विभिन्न कार्यक्रम तुर्जमा गर्न गठन गरिने समितिलाई बुझाउँदछ ।

झ) “नियमावली” भन्नाले महासंघको विधानमो अधिनमा रही महासंघीय परिषदबाट बनाईने नियमावलीलाई बुझाउदछ ।

## परिच्छेद २
## उद्देश्य

**३. संस्थाको उद्देश्य :-**

संस्थाको उद्देश्य देहाय बमोजिम रहनेछ ।

क) पोर्तुगलमा रहेका नेपालका आदिवासी जनजातिहरुलाई एक आपसमा पारस्पारिक एकता सदभाव एवं भातृत्व अभिवृद्धि गरी संस्थाप्रति सधै सक्रिय रुपमा सहयोग गर्ने गराउने ।

ख) आदिवासी जनजातिहरुको भाषा, लिपि, धर्म, संस्कृति र परम्परागत मुल्य मान्यताहरुलाई संरक्षण र प्रवर्द्धन गर्ने, गराउने ।

ग) पोर्तुगलमा बसोबास गर्ने नेपालीहरुका लागि र नेपालका लागि भईपरी आउने समाजिक कल्याणकारिणी कार्यहरु गर्ने र गराउनका लागि अन्य महासंघ संस्थाहरुसँग समन्वय गर्ने ।

घ) नेपाल र पोर्तुगलको बीचमा सामाजिक र सांस्कृतिक सम्बन्ध सुदृढ गर्ने ।

ङ) नेपालको केन्द्रीय संस्था नेपाल आदिवासी जनजाति महासंघसँग समन्वय गरेर आदिवासीहरुको हक अधिकारका सवालहरुमा सहकार्य र सहयोग गर्ने ।

## परिच्छेद ३
## सदस्यता/प्रतिनिधि

**धारा ४. सदस्यताको वर्गीकरण**

**४.१) यस महासंघको देहाय बमोजिम ३ प्रकारका सदस्यहरूको वर्गिकरण गरिएको छ ।**

**क) संस्थागत सदस्य/प्रतिनिधिः-** नेपालको आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान ऐन २०५८ को अनुसुचीमा पर्ने जाति समूदायको पृष्ठभुमि भएका पोर्तुगलमा क्रियाशिल संस्थाहरुले महासंघमा मातृसंस्थाको रुपमा एक संस्थागत सदस्यता प्राप्त गर्न सक्नेछन । महासंघको संस्थागत सदस्यता

प्राप्त गरेका प्रत्येक मातृसंस्थाहरुले १ जना महिला अनिवार्य सहित ५/५ जना महाधिवेशन प्रतिनिधि पठाउन सक्नेछन । प्रतिनिधि सबैको मताधिकार हुनेछन् ।

तर, संस्था स्थापना नभएका समुदायको सम्बन्धमा एक जनाले मात्रै उम्मेद्धारी बन्ने अवस्थामा प्रतिनिधि हुन पाउनेछ । उक्त प्रतिनिधि उम्मेद्धार हुन सोही समूदायबाट एक जना प्रस्तावक र एक जना समर्थक अनिवार्य हुनेछ । तर, प्रस्तावक र समर्थकको मताधिकार हुनेछैन । तर, एक भन्दा बढी उम्मेद्धारी परेमा पुन: मातृसंस्था स्थापना गरी उक्त संस्थामार्फत प्रतिनिधि भई आउनुपर्नेछ ।

**ख) संस्थापक सदस्य**:- "नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगल" स्थापना हुदाँ चुनिएका पहिलो कार्यसमिति नै महासंघको संस्थापक सदस्य हुनेछन ।

**ग) पदेन सदस्य**:- मातृसंस्थाका अध्यक्षहरु स्वत: महासंघको पदेन सदस्य हुनेछन ।

## धारा ५. सदस्यता शुल्क र सदस्यता प्रदान गर्ने विधि :

**५.१) विधानको धारा ४ बमोजिमको सदस्यहरूले देहाय बमोजिमको उपदफामा तोकिएको शुल्क तिरी महासंघको सदस्यता प्राप्त गर्न सक्नेछन् ।**

**५.१.१) संस्थागत सदस्यता शुल्क**

क) संस्थागत सदस्यता शुल्क एक प्रतिनिधि बराबर "१५ यूरो" बुझाउनु पर्नेछ ।

ख) संस्थागत सदस्यताको नवीकरण महासंघको महाविधेशनको अवधीसम्म हुनेछ ।

**५.१.२)** संस्थापक सदस्यको शुल्क एकपटकका लागि र पदेन सदस्यहरुको शुल्क धारा ५ को उपधारा ५.१.१ बमोजिम नै हुनेछ ।

## धारा ६. कार्यसमिति सदस्यहरुको सदस्यता र पद नरहने अवस्था:

क) सदस्यता परित्याग गर्न लिखित रुपमा निवेदन दिएमा ।

ख) महासंघ र मातृसंस्थाहरुको हित विपरित अनुशासन भंग गरेको ठहर भई सम्बन्धित मातृसंस्थाको कार्य समितिबाट दुई तिहाइ बहुमतको निर्णयले हटाउने माग गरेमा महासंघको कार्यसमितिको बहुमत निर्णयले सदस्यताबाट हटाउन सक्ने छ । तर निजलाई सफाईको मौकाबाट भने वन्चित गरिने छैन ।

ग) लगातार ३ पटकसम्म महासंघको कार्य समितिको बैठकमा विना जानकारी तथा बीना ठोस कारण अनुपस्थित रहेमा स्वत: पद तथा सदस्यता खारेज हुनेछ ।

घ) सस्थाको काम कारबाहीमा बेइमानी वा बदनियत गरेको कुरा प्रमाणित भएमा ।

ङ) यस विधान बमोजिम संस्थाले गर्न नहुने भनी तोकिएको कुनै कार्य गरेमा ।

## धारा ७. महासंघ कार्यसमितिका लागि पदाधिकारी बन्न उम्मेद्धारी हुन नपाउने अवस्था

क) अध्यक्ष/महासचिव पदमा एकपटक निर्वाचित भईसकेका मातृसंस्थाबाट उक्त पदमा निरन्तरता हुने प्रकारले उम्मेद्धारी दिन पाईने छैन ।

ख) सदस्यता शुल्क नबुझाएको मातृसंस्थाका प्रतिनिधि उम्मेद्वार बन्न पाईने छैन ।

ग) पदाधिकारी भई आफ्नो पदावदधी छदै बीचमै राजीनामा दिएका, निष्कृय रहेका, आर्थिक अनियमिता गरेको ठहर भएका र महासंघको विधान अन्तर्गत कारवाहीमा परेका व्यक्तिहरु उम्मेद्वार बन्न सक्ने छैन ।

## परिच्छेद -४

## बार्षिक भेला, महाधिवेशन, संघीय परिषद, कार्य समिति तथा बैठक सम्बन्धी व्यवस्था

**धारा ८. महासंघको बार्षिक भेलाः**

क) यस विधानको धारा ४ अनुसार सदस्यता प्राप्त गर्ने विभिन्न मातृसंस्थाहरुको समेत प्रतिनिधिमुलक उपस्थितमा महासंघको भेला आयोजना गरिनेछ ।

ख) संस्थापक सदस्यहरु तथा सल्लाहकारहरू पर्यवेक्षकको रुपमा प्रत्यक्ष भेलामा भाग लिन पाउने छन् ।

ग) भेला नै महासंघको सर्वोच्च निकाय हुनेछ । भेलाले विधानको धारा ३, उद्देश्यहरु प्राप्तिका लागि विभिन्न बिषयमा कार्यशाला आयोजना गरेर बार्षिक कार्यदिशा सहितको घोषणापत्र जारी गरिनेछ ।

घ) भेलामा महासंघको बार्षिक गतिविधिको प्रगति, समिक्षा र आर्थिक प्रतिवेदन प्रस्तुत गरी पारित गरिनेछ ।

ङ) भेलाको ठाउँ र मिति पुर्ण कार्यसमितिको बैठकले तय गरिनेछ ।

**धारा ९. महासंघको महाविधेशनः**

क) महासंघको महाधिवेशन प्रत्येक २/२ बर्षमा हुनेछ ।

ख) महासंघमा आवद्ध मातृसंस्थाहरुले सिफारिस गरी पठाएका प्रतिनिधिहरु र पर्यवेक्षकहरुको प्रत्यक्ष उपस्थितीमा महासंघको महाधिवेशन आयोजना गरिनेछ ।

ग) मातृसंस्थाहरुले महासंघको महाधिवेशन हुनु भन्दा १० दिन अगावै महाविधेशन प्रतिनिधिहरुको नाम सिफरिस गरिसक्नु पर्नेछ ।

घ) महाधिवेशन प्रतिनिधिहरु मध्येबाट महासंघको महासंघीय परिषद कार्यसमिति चयन हुनेछ । कार्यसमिति चयन गर्दा उपस्थित सबै प्रतिनिधिहरुको बीचमा सन्तुलन मिलाउदै सहमतीय प्रणालीलाई प्रथामिकतामा राखेर “**धारा १० को “ग”** बमोजिमको कार्यसमिति चयन गर्नुपर्नेछ ।

ङ) कार्यसमितिका पधादिकारी र सदस्यहरु महाविधेशन आयोजक हुनेछन । आयोजक र पर्यवेक्षकहरु बन्दसत्रमा सहभागी हुन सक्नेछन तर मतदानमा मताधिकार हुने छैन ।

च) महाधिवेशन ठाउँ र मिति पुर्ण कार्यसमितिको बैठकले तय गरिनेछ ।

**धारा १०. संघीय परिषदको व्यवस्थाः**

क) महासंघको एक संघीय परिषद हुनेछ । जो महासंघलाई क्रियाशिल रुपमा निरन्तर अगाडी बढाउन भुमिका निर्वाह गर्दै संचाल भईरहने परिषद हुनेछ । संघीय परिषदमा प्रत्येक मातृसंस्थाबाट १ जना पुरुष र एक जना महिला गरी दुई जना संघीय परिषद सदस्यका लागि प्रतिनिधित्व गर्न

पठाउनु पर्नेछ । जो संघीय परिषदको सदस्य हुनेछन । तर, बैठकमा गणपुरक संख्याको रुपमा गणना गर्दा १/१ गरेर सदस्य संगठनलाई गणना गरिनेछ ।

ख) संघीय परिषद महाविधेशन बाहेकको अवस्थामा महासंघको सर्वोच्च निकाय हुनेछ ।

ग) संघीय परिषद सचिवालय संचालनका लागि एक कार्यसमिति गठन हुनेछ । जुन महासंघमा आवद्ध विभिन्न मातृसंस्थाहरुले सिफारिस गरी पठाएको महाविधेशन प्रतिनिधिहरु मध्येबाट निम्न बमोजिमका १७ सदस्यीय कार्यसमिति चयन गरिनेछ ।

| | |
|---|---|
| **अध्यक्ष** | **१ जना** |
| **उपाध्यक्ष** | **३ जना (१ महिला अनिवार्य)** |
| **महासचिव** | **१ जना** |
| **सचिव** | **१ जना** |
| **कोषाध्यक्ष** | **१ जना** |
| **सह-कोषाध्यक्ष** | **१ जना** |
| **सदस्यहरू** | **९ जना (३३ प्रतिशत महिला सहभागिता)** |
| **जम्मा** | **१७ जना** |

*महासंघको आकास्मिक रुपमा भईपरी आउने बैठकहरू र कार्यसम्पादन चुस्त बनाउनका लागि सचिवालय समिति गठन गर्न सकिने छ । साथै महासंघको उद्देश्य प्राप्तिका लागि योगदान गरिरहनुभएका व्यक्तिहरुलाई कार्यसमिति बैठकबाट सल्लाहकारमा मनोनयन गर्न सकिने छ ।*

**१०.२)** कार्य समितिको कार्यकाल २ बर्षको हुनेछ ।

**१०.३)** महाविधेशन हुनु अगावै कार्यसमितिमा रहेका कुनै सदस्यको पदरिक्त हुन आएमा बाँकी अवधीका लागि सम्बन्धित मातृसंस्थाहरुको सिफारिसमा कार्यसमिति सदस्यको मनोनित गर्ने काम कार्य समितिको बैठकद्धारा गर्न सकिनेछ । कुनै सदस्यको पद विचमा रिक्त भएमा सो पदमा नियुक्त भएको सदस्यको कार्यकाल सो सदस्य जुन सदस्य पद रिक्त भई नियुक्त भएको हो सो सदस्य बाकी कार्यकालसम्मका लागि मात्र हुनेछ ।

**१०.४)** कार्यसमितिको बैठक आवश्यकता अनुसार अध्यक्षले बोलाउने छ । तर कार्य समिति पदाधिकारीहरूको जम्मा सदस्य संख्याको २/३ दुइ तिहाइले बैठक बोलाउन माग गरेमा अध्यक्षले तुरुन्त कार्यसमितिको बैठक बोलाउनु पर्नेछ ।

**१०.५)** कार्य समितिका पदाधिकारीहरूको कुल संख्याको बहुमत पदाधिकारीहरू उपस्थित नभई कार्यसमितिको बैठक बस्ने छैन ।

**१०.६)** कार्यसमितिको बैठकको अध्यक्षता समितिको अध्यक्षता समितिको अध्यक्षले गर्नेछ । अध्यक्षको अनुपस्थितिमा उपाध्यक्षले बैठकको अध्यक्षता गर्नेछ ।

**१०.७)** कार्य समितिको बैठकमा बहुमतको निर्णय मान्य हुनेछ र मत बराबर भएमा अध्यक्षले निर्णायक मत दिन सक्नेछ ।

१०.८) कार्यसमितिको बैठकमा छलफल भएको विषय र तत्सम्वन्धमा भएको निर्णयको विवरण ( माइन्यूट) छुटै कितावमा लेखी राख्नु पर्नेछ । तर निर्णयमा असहमती जनाउनेहरूले कैफियत खोली सही गर्नुपर्नेछ ।

१०.९) महासंघले गर्ने भनिएको सम्पुर्ण कार्यहरु कार्यसमितिक बैठकको निर्णयबाट हुनेछ ।

१०.१०) माथीका दफाहरूमा जनुसुकै कुरा समितिका सबै सदस्यहरू लिखित रुपमा सहमत भएमा त्यस्तो सहमतिलाई निर्णय पुस्तिकामा संलग्न गरी त्यस्तो काम बैठक विना पनि गर्न सकिनेछ । उपरोक्त बमोजिमको सहमतिलाई कार्य समितिको बैठकको निर्णय सरह मानिनेछ ।

**धारा ११. कार्य समितिको काम कर्तव्य र अधिकार**

**११.१.) कार्य समितिको काम कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछन ।**

११.१.१) महासंघको आगामी बर्षको बार्षिक कार्यक्रम तथा अनुमानित बजेट बनाई प्रत्यक्ष भेलामा प्रस्तुत गर्ने ।

११.१.२) विधान बमोजिमको व्यवस्था पालना गरी बार्षिक भेला र महाधिवेशनको निर्णय कार्यन्वयन गराउने ।

११.१.३) महासंघको हितमा हुने कार्यक्रम संचालन गर्ने ।

११.१.४) भेला र महाविधेशनको म्याण्डेड प्रति उत्तरदायी रहने ।

११.१.५) महासंघको उद्देश्य प्राप्तीका लागि उपलव्ध श्रोत र साधानको अधिकतम उपभोग र प्रयोग गर्ने ।

११.१.६) महासंघको कार्य सम्पादन गर्न कार्य योजना बनाउने, श्रोत जुटाउने कार्यन्वयन सुपरीवेक्षण र अनुगमन गर्ने ।

११.१.७) महासंघको कोष र सम्पति सुरक्षित तरिकाले राख्न लगाउने र बैंक खाता खोली संचालन गर्ने ।

**११.२) पद त्याग गर्न सक्ने:**

अध्यक्षले उपाध्यक्ष मार्फत कार्यसमिति समक्ष र उपाध्यक्ष तथा अन्य पदाधिकारीहरूले अध्यक्ष समक्ष राजिनामा दिई पद त्याग गर्न सक्ने छन् ।

**११.३) अन्य समितिहरू:**

यस विधानको परिधि भित्र रहेर महासंघको कार्य संचालनको लागि कार्य समितिको आवश्यकता अनुसार अन्य समिति वा उप समिति गठन गर्न सक्नेछ । यसरी गठन भएका अन्य समिति वा उपसमिति तोकिदिए बमोजिम हुनेछ । तर यस्ता समिति वा उपसमितिहरूको गठन कार्यसमिति बैठकबाट पारित गराउनु पर्नेछ ।

# परिच्छेद ५

## पदाधिकारीहरूको काम, कर्तव्य र अधिकार

**धारा १२. पदाधिकारीहरूको काम, कर्तव्य र अधिकार**

१२.१.) पदाधिकारीहरूको काम कर्तव्य र अधिकार कार्यसमितिका पदाधिकारीहरूको काम कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ ।

**१२.१.१) अध्यक्षको काम, कर्तव्य र अधिकार**

क) महासंघको समिति र संघीय परिषद वैठकको अध्यक्षता गर्ने, बैठक संचालन गर्ने ।

ख) महासंघको समिति र संघीय परिषद वैठकमा निर्णायक मत दिने ।

ग) महासंघको तर्फबाट प्रतिनिधित्व गर्ने वा प्रतिनिधि तोक्ने ।

घ) महासंघको नेतृत्व लिने ।

ङ) आवश्यकता अनुसार बैठकहरू बोलाउन महासचिवलाई निर्देशन दिने ।

च) अन्य पदाधिकारी एवं सदस्यहरूलाई कामको बाँडफाँड गर्ने ।

छ) अभिलेख प्रमाणित गर्ने ।

ज) महाअधिबेशन र कार्य समितिका निर्णयहरू कार्यन्वयन गर्ने गराउने ।

झ) महासंघको उद्देश्य पुरा गर्न विधान बमोजिम अन्य कार्यहरू गर्ने ।

**१२.१.२) उपाध्यक्षहरुको काम, कर्तव्य र अधिकार**

क) अध्यक्षको कार्यमा सहयोग पुऱ्याउने ।

ख) अध्यक्षले दिएको जिम्मेवारी पुरा गर्ने ।

ग) अध्यक्षको अनुपस्थितिमा निजको कार्य गर्ने ।

घ) अध्यक्ष र कार्यसमितिले प्रत्यायोजित गरेको अधिकारको प्रयोग गर्ने ।

**१२.१.३) महासचिवको काम, कर्तव्य र अधिकार**

क) महासंघको सचिवालयको रेखदेख र संचालन गर्ने ।

ख) अध्यक्षको निर्देशन अनुसार बैठक र सभा बोलाउने र संचालन गर्ने ।

ग) बैठकको माईनुट तयार गर्ने तथा बैठकको निर्णयहरूको अभिलेख सुरक्षित राख्ने र कार्यन्वयन गर्ने गराउने । महासंघको प्रगति प्रतिवेदन तयार गर्ने ।

घ) महासंघको तर्फबाट पत्र व्यवाहार तयार गर्ने ।

ङ) महासंघको दैनिक कार्य संचालनको जिम्मेवारी लिने र कर्मचारी प्रशासनको रेखदेख तथा कार्यहरू गर्ने ।

च) अध्यक्षले दिएको अन्य जिम्मेवारी पुरा गर्ने ।

**१२.१.४) सचिवको काम, कर्तव्य र अधिकार**

क) महासचिवलाई सहयोग गर्ने ।

ख) अध्यक्ष तथा महासचिवले दिएको जिम्मेवारी पुरा गर्ने ।

ग) महासचिवको अनुपस्थितिमा अध्यक्षले तोके बमोजिम कार्य गर्ने ।

घ) विधान बमोजिमका अन्य कार्य गर्ने ।

**१२.१.५) कोषाध्यक्षको काम, कर्तव्य र अधिकार**

क) महासंघको कोषको रेखदेख र संचालन गर्ने ।

ख) प्रत्यक्ष भेला र महाविधेशनमा बार्षिक कार्यक्रमको बजेट पेश गर्ने ।

ग) महासंघको लेखा दुरुस्त राख्ने ।

घ) महासंघको तर्फबाट असुल गर्नुपर्ने रकम पेश गर्ने ।

ङ) खर्च गर्नु पर्ने रकम भुक्तानी गर्ने ।

च) नियमित रुपमा बार्षिक लेखा परिक्षण गराउने ।

छ) महासंघका लागि तोकिएको अन्य कार्य गर्ने ।

**१२.१.६) सदस्यहरूको काम, कर्तव्य र अधिकार**

क) समितिको बैठकमा सक्रिया सहभागीता जनाउने ।

ख) महासंघको कार्यमा रचनात्मक भुमिका निर्वाह गर्ने ।

ग) जिम्मेवारीमा रहेको उपसमितिहरुमा रहेर कार्य गर्ने

घ) महासंघका लागि तोकिएका अन्य कार्य गर्ने ।

## परिच्छेद ६

## आर्थिक तथा कोष

### धारा १३. आर्थिक व्यवस्था

**१३.१.) महासंघको कोष**

**१३.१.१)** महासंघको आफ्नो छुट्टै नियमित कोष हुनेछ । सो कोषमा देहाय बमोजिम प्राप्त रकमहरू रहनेछन ।

क) सदस्यता शुल्क बापत प्राप्त रकम र लेबी ।

ख) कसैले स्वेच्छाले दिएको अनुदान, सहायता बापत प्राप्त रकम ।

ग) संस्थाको चल अचल सम्पती वा अन्य बस्तुको विक्रिबाट प्राप्त रकमहरू ।

घ) विदेशी संस्था, व्यक्ति वा अन्तराष्ट्रिय महासंघ संस्थाबाट सहयोग प्राप्त रकमहरू ।

ङ) विभिन्न कार्यक्रमहरू आयोजना गरी त्यसबाट आर्जन गरेको मुनाफा ।

**१३.१.२) खाता संचालन**

*संस्थाको बैंक खाता कोषाध्यक्षको (अनिवार्य) तथा अध्यक्ष र महासचिव मध्ये कुनै एकको संयुक्त हस्ताक्षरबाट खाता संचालन हुनेछ ।*

**१३.१.३) कोषको रकम खर्च गर्ने तरिका**

*संस्थाको कोषमा जम्मा भएको रकम खर्च गर्दा देहाय बमोजिमको तरिका अपनाई खर्च गरिनेछ ।*

क) महासंघको तर्फबाट खर्च गरिदा कार्यसमितिले निर्णय गरी तोकिए बमोजिम खर्च गरिनेछ ।

ख) सम्पुर्ण खर्चको जानकारी आर्थिक प्रतिवेदन महासंघको प्रत्यक्ष भेला र महाविधेशनमा जानकारी गराई अनुमोदन गर्नु पर्नेछ ।

**१३.१.३) लेखा समिति सम्बन्धमाः**

कोषाध्यक्षको संयोजकत्वमा कम्तीमा ३ देखि ५ जनाको लेखा समिति अनिवार्य गठन गर्नुपर्ने छ ।

## परिच्छेद ७

## निर्वाचन

**धारा १४) निर्वाचन सम्बन्धी व्यवस्था**

१४.१) कार्य समितिको निर्वाचन प्रयोजनको लागि बढीमा ५ जनाको एक निर्वाचन समिति कार्य समितिको सहमतीद्धारा गठन गरिने छ ।

१४.२) निर्वाचन समितिले विधानको परिधी भित्र रहेर निर्वाचन कार्यविधी आफै व्यवस्थित गर्नेछ ।

१४.३) निर्वाचन सम्बन्धी विवाद उत्पन्न भएमा विवादको टुँगो लगाउन निर्वाचन समितिले गरेको निर्णय नै अन्तिम हुनेछ ।

१४.४) निर्वाचन सम्पन्न भएपछि निर्वाचन समितिको स्वत: विघटन हुनेछ ।

१४.५) निर्वाचन समितिका सदस्यहरु उम्मेद्धार बन्न पाईने छैन, साथै कुनै पक्ष वा विपक्षमा संलग्न हुन पाईने छैन ।

१४.६) निर्वाचन समितिका सदस्यले कसैलाई पक्ष लिने वा त्यस्तो काम गरेको प्रमाणित भएमा अध्यक्ष मण्डलको अध्यक्षले कारवाही गर्नेछ । यसरी कारवाही गर्दा निर्वाचन समितिको बहुमतद्धारा निर्णय हुनेछ ।

१४.७) अध्यक्ष मण्डलले घोषणा गरी सपथ ग्रहण गरिसकेपछि मात्र सम्पूर्ण कार्यकारिणी सदस्यहरुको पद सकृय हुनेछ ।

**धारा १५. नियम बनाउन सक्ने**

१५.१) महासंघले आफ्नो कार्य सम्पादन गर्ने क्रममा आवश्यक विनियन बनाउन सक्नेछ र सो नियम प्रत्यक्ष भेला वा महाधिवेशनबाट पारित गराई लागु हुनेछ ।

१५.२) यो विधान र विधानको अधिनमा बनेको नियममा रही महासंघको कार्य संचालन र उद्देश्य कार्यन्वयनका लागि कार्य समितिले कर्मचारीको व्यवस्था र आर्थिक प्रशासन सम्बन्धी विनिमय बनाई लागु गर्न सक्नेछ । त्यस्तो विनिमयहरू प्रत्यक्ष भेला वा महाधिवेशनबाट अनुमोदन गराउनु पर्नेछ ।

**धारा १६. संस्थाको विघटनः**

१६.१) यस विधानबमोजिम संस्थाको वहालवाला कार्यसमितिले कुनै कार्यगतिविधि संचालन गर्न नसकी लामो समय संस्था निस्कृया भएमा संस्था विघटन हुन सक्नेछ । यस्तो अवस्थामा संस्थाको संस्थापक सदस्यहरूले संस्थालाई पुनर्जीवित गर्न पहल र सकृय भुमिका निर्वाह गर्न सक्नेछन् ।

**धारा १७. व्याख्या**

यो विधान वा विधान अन्तर्गत बनेको नियम विनियमको व्याख्या गर्ने अधिकार कार्य समितिलाई हुनेछ ।

**धारा १८). गोपणीयता भंग गर्न नहुने ।**

यस महासंघको कुनै पनि पदाधिकारी वा सदस्यले महासंघको अहित हुने कार्य गर्नु हुदैन । कार्य समितिका पदाधिकारीहरू वा प्रतिनिधि सदस्यहरूले बैठकमा, भेला सभामा असभ्य र अश्लिल शव्दको प्रयोग गर्न पाइने छैन ।

## अनुसुची १

## संस्थाको छाप र चिन्ह



**१ प्रतीक चिन्ह :**

*नेपाल आदिवासी जनजाति महासंघ पोर्तुगलको प्रतीक चिन्हमा एउटा त्रिकोणमा भित्रपट्टी बीचमा पर्ने गरी एउटा पाँचकुने तारा हुनेछ भने बाहिरपट्टी ऐकेवद्धताको प्रतीकको रुपमा बाँयाबाट दायातिर हातेमालो गरिएको हातहरु अंकित चित्र हुनेछ । त्रिकोणले हिमाल पहाड, तराई तीन क्षेत्रमा बस्ने आदिवासी जनजातिहरु जनाउनेछ भने ताराले तिनिहरुको एकता र हातहरुले तिनीहरुको बीच ऐकेवद्धता जनाउनेछन् ।*

## <u>अनुसुची २</u>

# सपथ ग्रहण

*यस संस्थाको कार्यसमितिले अध्यक्ष मण्डलको संयोजक समक्ष तपशिल बमोजिम उल्लेखित व्यहोरा सहित आ-आफ्नो पद तथा गोपनीयताको सपथ ग्रहण गर्नेछन ।*

*म.........................................................................यस महासंघको लक्ष्य र उद्देश्यलाई पुरा गर्न गराउन कार्यसमितिको ........................पदमा रही विधान अनुसार यो सपथ लिन्छु की आफ्नो कार्यभारलाई निष्ठा र ईमान्दारीतापुर्वक कसैको डर, धाक नमानी, लोभ मोहमा नपरी आफ्नो क्षमता र विवेकले भ्याएसम्म लगनशील भई पदीय दायित्वलाई अन्तिम समयसम्म पुरा गर्नेछु ।*

**सपथ लिनेको**

नाम:...................................................

पद : ................................................

दस्ताखत :......................................